# ललितपुर स्थित St. Mary's High School मा विद्यार्थीहरू प्रति भएको हिंसा र यातनाको घटना सम्बन्धी लैङ्गिक तथा यौनिक अल्पसंख्यक नागरिक समाजको वक्तव्य

Ref. No. चलानी नं. ०४२/०७७/७८
Date मिति २०७७/१२/२४
PN पत्र ४

नेपाल संवत् ११४१/०६/१९
२०७७ चैत्र २४
6 April 2021

***#HoldStMarysAccountable***

उपरोक्त सम्बन्धमा ललितपुर जिल्ला ललितपुर महानगरपालिका जितक्व टोलमा अवस्थित St. Mary's High School मा छात्राहरूमाथि गरिएका हिंसा तथा यातना सम्बन्धी घटना तथा अनुभवका समाचारहरु सामाजिक संजाल एवं सञ्चारमाध्यमहरूबाट बाहिरीए पछि यसको अध्यन गर्दा हामी लैङ्गिक तथा यौनिक अल्पसंख्यक नागरिक समाजको गम्भीर ध्यानाकर्षण भएको छ ।

अनुशासनको नाममा छात्राहरू प्रति गरिएको हिंसा र यातना सम्बन्धी बाहिरिएका वक्तव्यहरूमा लैङ्गिकता र यौनिकता सम्बन्धीका विषयमा पनि जिकर गरिएको छ । छात्राहरूको अनुभव वक्तव्य एवं ड रेकर्डमा विद्यालयका प्रध्यानाध्यापक स्वयंले दिएको वक्तव्यमा समयौनिकता (Homosexuality) भनेको पाप हो भन्ने विचार एवं त्यस्तै शिक्षा दिइने सन्दर्भ प्रति हामी यस विद्यालयको घोर निन्दा गर्दछौँ। कुनै पनि धर्मसंस्कृतिको आधारमा मानव यौनिकताको विविधतालाई लाञ्छना, तिरस्कार एवं सामाजिक हिंसाको उत्प्रेरणा दिने प्रकारका वक्तव्यहरू विद्यालय प्रध्यानाध्यापकबाट प्राप्त हुनु र विद्यालयमा सिकाइनुमा हामी सबै नागरिक समाज, नेपाल सरकार लगायत अन्य सरोकारवाला निकायहरू समेतको गम्भीर ध्यानाकर्षण हुनुपर्ने विषय हो ।

समयौनिकता, एक मानव यौनिकताको विविधताको उपज हो, यो प्राकृतिक र सामान्य विविधता हो भनि सन् १९९० मा विश्व स्वास्थ्य संगठनद्वारा ठहर भइसकेको र नेपालमा सन् २००७ मा सर्वोच्च अदालतले समेत समयौनिक व्यक्तिहरूको समान हकको प्रत्याभूत गराएको नजीर सिद्धान्त रहँदा पनि संविधानको मूलमर्म विपरीत नेपाल अधिराज्यमा कुनै पनि विद्यालयले समयौनिकता प्रति र समयौनिक व्यक्तिहरू प्रति विभेद, हिंसा तथा लाञ्छनाको उत्प्रेरणा गर्नु गराउनु संविधान र कानून विपरीतको कार्य हो ।

अर्चना

Esan

यति मात्र नभएर उक्त विद्यालयमा महिला वा बालिका हुनुको सीमा परिधि तोकेर सम्पूर्ण छात्राहरूलाई सोही ढङ्गको लैङ्गिक अभिव्यक्तिमा प्रस्तुत हुन बाध्य बनाइएको समेत तथ्यमा प्रकाश पारेको छ । प्रत्येक व्यक्तिलाई आफ्नो लैङ्गिक अभिव्यक्तिको स्वतन्त्रता छ । यो अधिकार नेपालको संविधान र सर्वोच्च अदालतका नजीर सिद्धान्तहरूले समेत प्रत्याभूत गराएको छ ।

सामाजिक संजाल तथा सञ्चारमाध्यमहरू मार्फत् यस विद्यालयका विद्यार्थी एवं पूर्व-विद्यार्थीहरूले दिएको अनुभव वक्तव्यहरूमा हामी नेपाल सरकार तथा संवैधानिक आयोगहरूको गम्भीर ध्यानाकर्षण गराउन चाहन्छौँ । विद्यालय जस्तो संवेदनशील क्षेत्रमा धर्मको नाममा मानिसको यौनिकता तथा लैङ्गिकता प्रति विभेदकारी विचारधारा सिकाउने र छात्राहरूको लैङ्गिक अभिव्यक्तिमा कुण्ठा लगाउने लगायत अनुशासनको नाममा भइरहेको यातना तथा हिंसाले त्यस विद्यालयमा अध्ययनरत छात्राहरूको दैनिक जीवनमा कतिसम्मको प्रतिकूल असर पुर्याएको भनि नेपाल सराकर संवैधानिक आयोगहरूको ध्यानाकर्षण होस् भन्ने आग्रह गर्दछौँ। विद्यालय जीवनमा अर्थात् बाल्यकालमा भएका हिंसा तथा यातनाका घटनाहरूले जीवनोप्रान्त व्यक्तिको मनोस्वास्थ्य स्वस्थतामा आघात पुर्याउने, छात्राहरूको मनोस्वास्थ्यमा गम्भीर चोट पुग्ने, र आत्महत्या समेत गर्न बाध्य भएको स्थिति सम्म पुगेको अवस्थामा राज्यको ध्यानाकर्षण गराउन चाहन्छौँ।

समाजमा हामी लैङ्गिक तथा यौनिक अल्पसंख्यक जनसंख्यालाई यसै पनि विभेद, हिंसा, लाञ्छना, तिरस्कार लगायतका सामाजिक सिमान्तिकरण भोग्नुपरेको अवस्थामा शिक्षाको माध्यमद्वारा समाजमा व्यापक सबै प्रकारका विभेद, हिंसा, लाञ्छना र कुरीतिको उन्मुलन गर्नको लागि पहल गर्नुपर्ने ठाउँमा यस विद्यालयले ती विभेद, हिंसा, लाञ्छना र कुरीतिलाई अझै उत्प्रेरणा दिएको विद्यार्थी र पूर्व-विद्यार्थीहरूको वक्तव्यले प्रकाश पारेको हुनाले संविधान र कानून विपरीत सिमान्तकृत जनसंख्या प्रति हिंसा प्रोत्साहन गर्ने यस्तो कार्य विद्यालय र विद्यालयको शिक्षामा निषेध हुनुपर्छ भन्ने जोडदार माग पनि राख्दछौँ ।

**हाम्रा मागहरू :-**

१) St. Mary's High School मा तत्काल यस विषयको छानबिन अघि बढाइ दोषीलाई कारवाही गरियोस्। विषयवस्तुको संवेदनशीलतालाई मध्यनजर गरि छानबिनका क्रममा प्रत्येक विद्यार्थीको गोपनीयताको सुनिश्चित गरियोस् र प्रत्येक भुक्तभोगीले सम्बन्धित निकायमा निर्धक्क तथा सुरक्षित महसुस हुने गरि आफ्नो भोगाईको वक्तव्य दिन सक्ने वातावरणको व्यवस्था गरियोस्।

२) जुनसुकै धर्मको आडमा पनि कुनै निश्चित यौनिकता र लैङ्गिकतालाई 'पाप'को उपमा दिएर हामी लैङ्गिक तथा यौनिक अल्पसंख्यक जनसंख्या प्रति विद्यार्थीहरूमा विभेदकारी र लाञ्छनायुक्त धारणा स्थापित गर्न

कार्य बारे छानबिन गरि तत्काल St. Mary's High School का प्रध्यानाध्यापक, प्रशासन, शिक्षक लगायतका व्यक्तिहरूलाई कानूनको दायरमा ल्याई आइन्दा यस्तो कानून विपरीतको कार्य नगर्न नगराउन एवं त्यस्ता पाठ्यक्रम तथा पाठ्यसामाग्रीहरू समेत हटाउन चेतावनी र निर्देशन जारि गरियोस्।

३) St. Mary's High School मा पठनपाठन हुने पाठ्यक्रम तथा पाठ्यसामाग्रीहरू एवं विद्यालयद्वारा जारी गरिएका नीतिनियम र मापदण्डहरू संविधान, कानून र मानव अधिकारको मान्यता अनुरूप रहेको नरहेको, यसले लैङ्गिक तथा यौनिक अल्पसंख्यक व्यक्तिहरू लगायत विभिन्न सामाजिक सिमान्तिकरणमा परेका समुदायहरू प्रति विभेदकारी, लाञ्छनायुक्त र हिंसा उत्प्रेरणा दिने प्रकृतिको रहेको नरहेको छानबिन गरि संविधान, कानून र मानव अधिकारको दायरा भित्र ल्याउन कार्यवाही गरियोस्।

**बोधार्थ एवं कार्याथ :**

- शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय, सिंहदरबार, यँ (काठमाडौँ)।
- शिक्षा विकास निर्देशनालय, सामाजिक विकास मन्त्रालय, बागमती प्रदेश, हेटौँडा।
- जिल्ला शिक्षा विकास तथा समन्वय इकाइ, कनिबहाल, यल (ललितपुर)।
- ललितपुर महानगरपालिका शिक्षा शाखा, पूच्व, यल (ललितपुर)।
- राष्ट्रिय मानव अधिकार आयोग, दुरुख्यः (हरिहरभवन), यल (ललितपुर)।
- राष्ट्रिय महिला आयोग, लुँमरि (भद्रकाली), यँ (काठमाडौँ)।
- प्रहरी प्रधान कार्यालय, नक्साल, यँ (काठमाडौँ)।
- निजी तथा आवसीय विद्यालय अर्गनाइजेशन (PABSON), यँ (काठमाडौँ)।
- राष्ट्रिय निजी तथा आवसीय विद्यालय एसोसियसन (N-PABSAN), यँ (काठमाडौँ)।

**संयुक्त जारी**




कार्यकारी निर्देशक,
इशान रेग्मी,
क्याम्पेन फर चेन्ज





कार्यकारी निर्देशक,
रुक्शना कपाली,
क्वयेर युथ ग्रुप




कार्यकारी निर्देशक,
मनिषा ढकाल,
नील हिरा समाज

campaignforchange17@gmail.com queeryouthgroup.nepal@gmail.com info@bds.org.np

## अनुसूची

- St Mary's School grapples with sexism, homophobia, and body shaming
  https://recordnepal.com/st-marys-school-grapples-with-sexism-homophobia-and-body-shaming
- पहिरनका नाममा विद्यार्थीमाथि सेन्ट मेरिजको अत्याचार
  https://shilapatra.com/detail/54711
- सोसल मिडियाबाट विद्रोहमा सेन्ट मेरिजका विद्यार्थी : कपालको आकारले छेड्यो बहस
  https://pahilopost.com/content/20210402120608.html
- सामाजिक संजालमा व्यापक रूपले विद्यार्थी तथा पूर्वविद्यार्थीहरूले दिएका वक्तव्यहरू (ट्विटर र फेसबुकमा खोजीद्वारा प्राप्त गर्न सकिने)

***